# जामन गुभाजूको वंशावली

पण्डित ज्योतिष वैद्य रत्नराज बज्राचार्य

प्रकाशक
राजेश, सदन, अजय, प्रकाश, रविन र बरुण

# जामन गुभाजूको वंशावली

*लेखक :*

पण्डित ज्योतिष वैद्य रत्नराज बज्राचार्य

*प्रकाशक :*

राजेश, सदन, अजय, प्रकाश, रविन र बरुण



*संस्करण :*

प्रथम

*मिति :* २००६ भाद्र

*प्रति*

पाँच सय प्रति

श्री

ॐ नमो भगवती आर्य महा प्रति सरा देव्यै

शरिरं च नव छिद्रंव्याधिग्रष्टम् कले बलम।।

शरिरं क्षण विध्वं सि कल्पां तस्था पिनो गुणा।।

थ्व संसारे जन्म जुस्यंलि

ग्रह दशांयाना, अनेग रोग

दुःख कष्ट ज्वीगु, थुकियात उपाय, जप, पाठ, शांत्ति

स्वस्ती यथाशक्त दान, धर्म ज्वीगु।।

विश्वासघाटकया उप[illegible]मदु औषधं अपिनः

उकुमरोग (क्यान्सर)

# लेखकको भनाई

बौद्धशास्त्रअनुसार परिवर्तनशील यो संसारमा अष्टादश लक्षणयुक्त मानवजन्म अति दुर्लभ छ। यो मानवजन्म अमूल्य रत्नतुल्य छ। जसले यो मानवजीवनमा अनित्य, दुःख, अनात्मदेखि बुझी सदुपयोग गर्ने कोशिस गर्ने ठूलो मौका छ। यदि यो जीवनमा केही पनि गर्न सकेन भने व्यर्थ हुने छ। यो कुरा विचारणीय छ। यो मानवतालाई उत्तरोत्तर र सहि मार्ग (सुगति) तिर लोकोत्तर मार्ग ([illegible]क्षमार्ग) ग्रहणगर्नु परमावश्यक छ। धर्म एक मात्र इहत्र र परत्रको साधन हो।

यो तपोवर्तको मूल देवभूमि, पुण्यभूमि, नेपालमण्डलमा श्री स्वयम्भ त्यको प्रभावले श्री महामञ्जुश्रीद्वारा यो देश निर्माण भएको कुरा स्वयम्सिद्ध छ। यसपछि श्री हेवज्र नैरात्मा आदि देवदेवताहरूको प्रादुर्भाव भएको देखियो। हुन त ३३ कोटी देवताको बासस्थान हो। यहाँ अनेक संस्कृति जात्राहरू छन्। त्यसमध्ये पनि सबभन्दा ठूलो जात्रा ललितपुरको मुख्य देवता श्री मत्येन्द्रनाथको हो। श्री मत्सेन्द्रनाथ नेपाल मण्डलमा सदा सहकाल अन्नदाताको रुपमा उपस्थित हुनुहुन्छ।

आर्यावलोकितेश्वर करुणामय मत्सेन्द्रनाथको नामले प्रख्यात छ। मत्सेन्द्रनाथको गुण वर्णन जति गरे पनि कमै हुनेछ। यं विष्णुं प्रवदन्ति वैष्णवगणाः शैवाः शिवं शक्तिकाः शक्तिं भास्करभक्तिका दिनमणिं ब्रह्मस्वरूपं द्विजाः। मत्सेन्द्रं मुनयो वदन्ति सततं लोकेश्वरं वैदिकाः बौद्धस्तं करूणामयं प्रतिदिनं तन्नौमि सिद्धेश्वरम्।। *(जसलाई वैष्णवहरू विणु भन्छन्, शैवहरू शिव भन्छन्, शाक्तहरू शक्ति मान्छन्, सौरहरू सूर्य भन्छन्, ब्राह्मणहरू साकार ब्रह्म भन्छन्, मुनिजनहरू मत्स्येन्द्रनाथ भन्छन्, वैदिकहरू सदा लोकेश्वर भन्छन्, बौद्धहरू उनैलाई करूणामय भन्छन्, त्यस्ता सिद्धेश्वर भगवान् मत्स्येन्द्रनाथलाई म प्रतिदिन प्रणाम गर्दछु।)*

कलिगत सम्वत् ३६०६, विक्रम सम्वत् ५६२ मा श्री मत्सेन्द्रनाथ देवको नेपाल आगमन भएको हो। नेपाल आगमनको लागि पहल गर्ने साधक्य, सिद्धिज्ञ्न्हरू गु[illegible] वन्धुदत्त, राजा नरेन्द्रदेव र ललित रथचक्रको महान् कर्म यो पुस्तकबाट स्पष्ट हुन्छ। मेरो आफ्नो ज्ञान, बुद्धी आफूसँग भएको पुस्तकहरू र वंशावलीको आधारमा यो पुस्तक तयार भएको हो। यसमा केही त्रुटी, गल्ती भएमा केलाई सुझाव दिनुहोला।

श्रीमानदेव संस्कारित चक्र वर्ण महाविहारोत्पन्न श्री रत्नराज वज्राचार्य णेयं पुस्तिका पूर्व प्राचीन पुस्तकाणि प्रविलोक्य स्ववुध्यदानुसारेण शोधयित्वा स्वयंमेव परिश्रमेण मुद्रयित्वा अस्मिं पुस्तके यत्रतत्र अशुद्धयादि मस्ति तत्रतत्र ज्ञानि जनै शोधयितत्र्य मिति मे प्रार्थनास्ति।

**–लेखक**

# चुकवहालको वर्णन

श्रीयोस्तु सम्वत ७६७ सालमा श्री सिद्धिनरसिंह मल्ल राजाले ललितपुर नगरमा श्री कृष्ण देवको स्थापना (हाल कृष्ण मन्दिर) गरी कोत्याहुती यज्ञ गर्नलाई काशी शहरको राजा ब्राह्मण २१ जना निमन्त्रणा गरी यज्ञ आरम्भ गरे। अनेक पूजाभार वेदपाठ गरी गरेको होम महिनादिन बित्दा पनि पूरा हुन नसकेपछि ब्राह्मणगण सम्पूर्ण बसी प्रश्नले हेर्दा एक विघ्नशान्ति गर्न यहि नगरेका शास्त्र मन्त्रबाट पोख्त भएकालाई बोलाई तारणलगाई यज्ञ पूर्ण गर्नुपर्ने सल्लाह राजालाई भएपछि सो बमोजिम गर्न राजाको दुतहरूलाई बोलाई न्याखाचोकको कुलपादको सन्तान मणिदेव बज्राचार्यलाई बोलाइ ल्याउन आज्ञा भयो। मंगलबजारमा राजा सिद्धिनरसिंह मल्लकहाँ गई मणिदेव बज्राचार्यले बिन्ति चढाए। ''हे महाराजा म उपस्थित भै सकेको छु। आज्ञा होस! मैले के गर्नु पर्‍यो? राजाले वृतान्त कुरा सुनाएपछि यो काम पूर्ण भएमा तिम्रो इच्छाअनुसार मसँग भएको दिनेछु।'' यति वचनवद्ध भएको राजाको आज्ञाअनुसार मणिदेव गुरुज्यू (वज्राचार्य) ले आवश्यक विचार गरी ठाउँ ठाउँमा तारण लगाई मन्त्र सोध प्रयोग गरीकन यज्ञमा पूजा गरी सिद्ध गरे। यो दिनदेखि यज्ञ होममा कुनै विघ्नवाधा भएन। आजको दिनमा फूल, नैवेद्य, फलफूल, मिठाई, धुपदिपले गरी



शुभ लग्नमा यज्ञ सम्पूर्ण गरियो। मणिदेव गुरुज्यू ब्राह्मणगणहरूलाई राजाले यथायोग्य दक्षिणा समर्पण गरी बिदा गरे। मणिदेव गुरुज्यूलाई राजाबाट आज्ञा भयो "यो आजको दिनमा मैले केहि पुरस्कार दिने इच्छा भयो। भन्नुहोस् मैले सकेको दिने भएँ, आज्ञा होस्" राजा सिद्धिनरसिंहको वचन सुनेर मणिदेव गुरुज्यूले जवाफमा भने जजमानको पूजापाठ गर्नुपर्ने हाम्रो कर्तव्य थियो। सो मैले पूर्णगरे। जितापूर नगरमा गुरुज्यूहरू कोही नभएको हुँदा हाम्रो शाखा सन्तानले आवश्यक पूजा-पाठ, कर्म-काण्ड गर्न पाउने र हाम्रो शाखा सन्तान भएसम्म श्रीमान देव राजाबाट बनाएका विहार चोक बहालमा हामी वसी आवश्यक नित्य पूजा गर्न पाउने उपकार भए लोकजनलाई शिक्षादिक्षा दिनपाए पुग्छ।" राजा सिद्धिनरसिंह मल्ल अति खुसी भई तत्काल वकसपत्र लेखिदिएको दिनदेखि नै श्री मणिदेव वज्राचार्य चुकःबहालमा बस्न पाए। श्री रत्न पाणी बोधिसत्वलाई नित्यपूजा गरी दैनिक यहि विहारमा कुलदेवता सेवा गरी बसे।

दिन बित्दै गए मणिदेव गुरुज्यूको पहिलो सन्तानको रूपमा श्री महामञ्जुश्रीको अंश प्राप्त अति ज्ञानी ३२ लक्षणले संयुक्त एक बालकको जन्म भयो। आफ्नो कुलाचारअनुसार मञ्जुदेव नामाकरण गरे। मञ्जुदेवको अन्नप्रासनको बेला आयो। अन्नप्रासनको बेलामा सो बालक मञ्जुदेवले अन्न खान मानेन दिन बित्दैगए। दहिदुध, फलफूल, पञ्चामृत मात्र खुवाएर प्रतिपाल गरे। पाँच वर्षमा आफ्नो पुर्खाले बनाएको श्री हिरण्य



वर्ण महाविहार लगेर चुडाकर्मगरी कुलाचारअनुसार वज्राचार्याभिषेक गरी अध्ययन गर्न लगाए। ॐ नमो वागिश्वराय: स्वर व्यञ्जन, सरस्वती व्याकरण, गणित, ज्योतिष शास्त्र, वैद्य शास्त्र आदि षड्शास्त्रको अध्ययन गराए। अति स्मृतिवान थियो मञ्जुदेव। मणिदेवको जम्मा ५ वटा सन्तान थियो। पहिलो मञ्जुदेव, दोश्रो मञ्जुराज, तेश्रो भारदेव, चौथो महामणी, पाँचौ पुत्रको नाम थियो सिद्धिमुनि। मञ्जुदेव जवान भयो। मञ्जुदेवलाई मञ्जुना नामको कन्यासँग विवाह भयो। मञ्जुदेव र मञ्जुनाबाट एक बालकको जन्म भयो विश्वदेव।

मञ्जुदेवले आफ्ना चारभाइलाई र अरूलाई पनि शिक्षा दिन अनेक शास्त्रको बारेमा सिकाउँदै गरे। एक दिनको कुरो एक विदेशीले मंगलबजारमा एक बालकलाई मारेर हात खुट्टा छुट्याएर फोक्सो, मुटु आदि अलगअलग पारी चटक देखाउँदै गरे। यो मोहजाल हेरी कति मान्छे आ-आफ्ना काम छोडेर हेरिरहे। कुनै बालक स्कुल जानु पर्ने नगइकन हेरिरहे। स्कुल जानुपर्ने कुरा सम्झेर जाँदा गुरुले किन ढीलो आउनुभएको कारण सोधे। मंगलबजारमा एक विदेशीले बच्चा मारेर चटक देखाइरहेका कुरा सुनाएर क्षमा मागे। यो कुरा सुनेर गुरुले आफ्ना शिष्यहरूलाई आज्ञा भयो, "हे शिष्य तिमीहरूलाई अति अनौठो लाग्ने चटक सिकाउँछु। सबै लोकजन अचम्म मान्नेछन् र तिमीहरूको चटक हेर्न आउँने छन्।" यति भनी आफ्ना शिष्यहरूलाई डोको लिन पठाए। डोकामा मन्त्र गरेर शिष्यहरूलाई दिए अब मंगलबजार गएर मंगलधारामा पानी भरेर



ल्याउनु तिमीहरूले डोकोमा पानी भरेर ल्याएको देखेपछि सबैजना तिमीहरूकहाँ हेर्न आउने छन्। विदेशीकहाँ कोही हुने छैनन्।" गुरुले भनेअनुसार नै बच्चाहरूले डोकोमा पानी थापेर ल्याएको देखेर सबै अचम्मित भएर हेर्नआए। विदेशीको चटक हेर्ने कोही नभएपछि विदेशीले मन्त्र सोधन गरी धुलोले सो डोकोमा छ्यापे पछि पानी सबै पोखिएछ। अव गुरुको गाली खानुपर्ने कुराले सबै चिन्तित भए। गुरुकहाँ क्षमा माग्न गएछन्। सबै कुरा सुनिसकेपछि गुरुले आफ्नो शिष्यलाई पढिरहन आज्ञा दिँदै आफू चीलको प्वाख लिई चीलरुप धारण गरी उडेर मंगलबजारतिर गए। मंगलबजार पुगी चटक देखाइरहेको विदेशीको अगाडी रहेको बच्चाको फोक्सो टीपेर घर फर्केछ। अब विदेशीचटकेलाई फसाद पर्‍यो। बच्चालाई वचाउन नसक्ने भए। उसले विचार गरे अघि बच्चाहरूले डोकोमा पानी भरेर ल्याएकोलाई मैले विफल बनाइदिएको थिएँ। यसको वदला लिन यो जादुगरी साधक आफै चीलको रुपको धारण गरी मलाई यस्तो आपत पारेको हुन सक्छ भनी अघि डोकोमा पानी भर्ने बच्चाहरूको बारेमा चटक हेर्न आउनेहरूसँग सोधे। अघि डोकोमा पानी भर्ने बच्चाहरूको बारेमा चुकःबहालमा अध्यायन गर्नेहरू हुन् भन्ने जवाफ पाउनासाथ सो ठाउँ चिन्ने मान्छे लिएर चुकःबहाल पुगेको बेला गुरु चील रुपबाट मानव रुपमा बदली फोक्सो लुकाई आफ्नो पत्नीलाई यहाँकोही विदेशी आएमा म लगनखेलको मातृवृक्षनेर हुने कुरा बताउ र आफू पनि केहि पुरुषार्थका साथ काममा व्यस्त देखाउनु भनी गुरु बाहिर लागे

विदेशी चुकःबहालमा पुगि सोधनी गर्दा गुरुको पत्नीले म काममा व्यस्त छु, आखीरी पर्ने केही भए माथि आएर वताउनु भन्ने आदेश भएपछि विदेशी चटके माथि गएछ र आफ्न पाउ गालेर रक्सी बनाइरहेको दृष्य देखेपछि ऊ तिनछक परेछ। गुरुको बारेमा सोधनी गर्दा लगनखेल गएको वताए। सोहीअनुसार लगनखेल पुग्दा एक जना मानिस मातृवृक्षको मूल हांगानै खुट्टाले भुईं छुने गरी टेकाई गाई, भैसी, बाख्रालाई घाँस खुवाई रहेको देखेछ। यो दृष्य देख्नासाथ विदेशीले गुरुज्यूलाई बुझेर अति सम्मानले खुट्टा ढोगी बिन्ती गरे हे गुरु मेरो सबै अपराध क्षमा गरी पाउँ, अबदेखि नेपालमा यस्तो छलकपट कहिल्यै गर्ने छैन।" त्यसो हो भने यो हिउँदको समयमा यो वस्तु अघाएको छैन अन्त घाँस पाउँदैन त्यसैले यो काम तिमीले गर्नु भन्ने आज्ञा भयो। अब विदेशीलाई पऱ्यो फसाद गरुँ आफूलाई थाहा छैन नगरुँ आफै फसादमा परेर विन्ती चढाउन आएको छु। आफ्नो गुरुलाई सम्झेर सो काम गर्ने प्रयास गरे। मञ्जुदेव गुरुज्यू आफ्नो घरतिर लागे। गुरु चुकःबहालमा मात्र के पुगे रुख सोझिएछ र विदेशी चटके पछारीएर बेहोस भए। होसमा आएपछि बल्ल बल्ल मञ्जुदेव गुरुज्यूको घर चुकःबहाल पुगी यथाश्रद्धा गुरु दक्षिणा चढाई विन्ति गरी फोक्सो लिएर गई बच्चोलाई जिउँदो बनाए। विदेशी चटके आफ्नो घरतिर लागे। यो कुरा नेपालको तिनै शहरमा व्याप्त प्रचार भए।

संवत् ७७८ देखि श्री निवास मल्लको शासन व्यवस्थामा संवत् ७८९ सालमा श्री जटाधारी लोकेश्वर (श्री मीननाथ देव)

को मूर्ति (पहिलाको) जिर्ण भएकोले अष्टधातुको मूर्ति वनाई स्थापना गरेको संवत् ७८६ मञ्जुदेवले क्रियासमुच्चय लेखेको ७९६। संवत् ७९८ कारंडव्यूह लेखी गएको मणिदेवको छोरा विश्वदेव। श्री मत्स्येन्द्रनाथ देव रथ थतिटोलमा रहेको बेला प्रयागपोखरी दोबाटोको भूत लागेकोले रथमा सुतेका भायोजु एक जनाको मृत्यु भैराखेको र भोलिपल्टपनि अर्को भायोजु मरेकोले आश्चर्य मानी चुकबहालको मञ्जुदेव गुरुज्यूलाई देखाउन प्रयागपोखरी दोबाटोको भूत लागेकोले मरेको ठहर गरेकोले सो ठाउँमा श्री विघ्नेश्वर गणेशको स्थापना गरिदिएको थियो। यद्यपी थतिटोलको इनारसँगै पश्चिमाभिमुख गणेश छन्। यो गणेश स्थापना श्रीयोस्तु संवत् ८३९ श्री ललितपुर नगर द्वितीय राज्याधिपति श्री जय महिन्द्रसिंह देवस्य विजय राज्य। संवत् ८२६ जय वीर योग नरेन्द्र। यो वर्ष चुकःबहालमा भित्र बाहिर तेलिया ईटाले भूई छापेको थियो। र बीचको चैत्य समेत जिर्णोद्वारा गर्ने मूल आचार्य मञ्जुदेवको पुत्र विश्वदेव दानपति दुःख हरणकर्ता स्त्री विष्णुमति सहितले यज्ञ गरी प्रतिष्ठा गरे। संवत् ८४८ विश्वदेव लेख्ने विश्वदेवको पुत्र कुल देव, कुलदत्त ८९२ कुलदत्तको पुत्र विद्यादत्त, विद्यादत्तको पुत्र लक्ष्मीदत्त, लक्ष्मीदत्तको पुत्र जिनदत्त, कारंडव्युह ८३९/८२६ श्री जय योग नरेन्द्र मल्ल।

संवत् ९०३ गुणसागर, संवत् ९२९ वीरदत्त, ९५२ शुभदत्त, ८५६ विष्णुमल्लले श्री मीननाथलाई चाँदीको पाँच चढाएको। शुभम्

# लेखकको परिचय

नाम : रत्नराज वज्राचार्य

जन्म : वि.सं. १९८१ जेष्ठ कृष्ण नवमी।

जन्मस्थान : चुकवहाल, पाटन, ललितपुर।

वासस्थान : लगनखेल, पाटन।

शिक्षा : विद्यालय गई शिक्षा आर्जनभन्दा गुरुकुलवाट विशेष शिक्षादीक्षा प्राप्त, १९९० सालमा नेपाललिपी अध्ययन। १९९६ सालमा धर्मोदय पाटशालामा अमरकोषको अध्ययन। १९९७ सालमा कौमुदी अध्ययन। १९९८ सालमा हितोपदेश अध्ययन। २००० सालमा गुणकारण्डव्यूहको अध्ययन। २००१ सालमा स्वयम्भूपुराणको अध्ययन।

भ्रमण : नेपाल उपत्यका, नेपाल र भारतका मुख्य धार्मिक क्षेत्रहरूको पटकपटक अध्ययन तथा भ्रमण।

कृति :

(१) **मनिनाथ वंशावली**
*प्रकाशक* : न्यहू वज्राचार्य।

(२) **बुंगद्योग रथयात्रा**
*प्रकाशक* : लेखक स्वयं।

(३) **श्रृंगकेतु महाराजा**
*प्रकाशक* : अक्षयश्वर महाविहार।

(४) **खड्गयोगिनी, खास्ती, नारायणहिटी**
*प्रकाशक* : मीनभवन।

(५) **वुवाहा विद्याधर यशोधरं।**

(६) **चुकवहाया वंशावली।**

(७) **शुवर्णाक्षर प्रज्ञापारमिता वंशावली**
*प्रकाशक* : वुद्ध अध्ययन मण्डल।

(८) **आर्यतारा नराहुति**
*प्रकाशक* : हेरारत्न शाक्य, लगनखेल।

(९) **यमराज ज्ञानदत्त ब्रह्मदत्त**
*प्रकाशक* : स्वयं लेखक।

(१०) **पद्मपाणी जटाधारी लोकेश्वर**
*प्रकाशक* : रुक्मीनी, वानेश्वर।

(११) **वसुन्धरा देवीया अष्टोत्तर पाठ**
*प्रकाशक* : लेखक स्वयं।